# नेपालमण्डल




काशीनाथ तमोट

नेपालमण्डल अनुसन्धान गुथि

# प्रकाशकीय

नेपालमण्डल नेपालको एक प्रदेशको रुपमा रहिआएको छ। विगतमा नेपालमण्डललाई नै नेपाल देशको नामले चिनिंदै आएपनि आज यो शब्दको अर्थ, सीमाना, नेपालमण्डलका बासिन्दालाई लिएर चर्चा-परिचर्चा, वादविवाद आदि भइरहेको छ। परिवर्तित सन्दर्भमा नेपालमण्डल शव्दलाई लिएर ऐतिहासिक सामाजिक, राजनैतिक, धार्मिक आदि आधारमा नियाल्नुपर्ने आवश्यकता रही आएको छ। यसैलाई मनन गरेर **नेपालमण्डल अनुसन्धान गुथिले** आफ्नो अनुसन्धानको क्रममा नेपालमण्डल शब्दको अनुसन्धान गर्ने क्रममा काशीनाथ तमोटज्यूले 'नेपालमण्डल' पुस्तक प्रकाशन गर्न पाएकोमा यस अनुसन्धान गुथि खुसी व्यक्त गर्दछ। यस पुस्तकले आजको नेपालमण्डलको सीमाना र अर्थ सम्वन्धी वर्तमान अन्यौल हटाउने र समस्या समाधान गर्न सहयोगी भूमिका निर्वाह गर्छ भनी आशा गर्दछु।

अन्तमा, यस नेपालमण्डल पुस्तक तयार गर्न भाषा सम्पादन गरि दिनुहुने कृष्णप्रसाद रिमालज्यूलाई विशेष धन्यवाद दिन चाहन्छु।

- ज्वाला स्थापित

# विषय सूचि

# नेपालमण्डल

## १. प्रस्तावना

ईशापूर्वकालदेखि अर्थात दुई हजार वर्षअघि नै छिमेकी मुलुकहरूबीच 'नेपाल' पृथक् पहिचान राख्न सफल मुलुकको रूपमा लिइन्छ। नेपालसंवत् ८८८- ८९० अर्थात् विक्रम संवत् १८२५ देखि १८२७ सम्म काठमाडौं, भक्तपुर र ललितपुरमाथि गोरखाका राजा पृथ्वीनारायण शाहले विजय हासिल गरेपछि करीब एक सय ५० वर्षसम्म गोरखाली शासकहरूले 'गोरखा' नामबाट मुलुकलाई चिनियोस् भनी उक्त शब्दको प्रयोग गर्ने प्रयास गरे, तर उक्त प्रयास भने सफल हुन सकेनन्। 'नेपाल' नेपाल नै भई विश्वमा आफ्नो कीर्ति कायम गर्न सफलता पाइरह्यो। उता 'गोरखापत्र'मा भने तत्कालीन प्रयासको संकेतस्वरूप 'गोरखा' कायम रहेको छ। समयक्रमले 'नेपाल' शब्दले भने विभिन्न रूपमा प्रयोग भई सोही प्रकारान्तले विभिन्न ढंगले बुझ्ने र बुझाउने गरेको पाइन्छ।

नेपाल-अधिराज्य - नेपाल देश (मेची-महाकाली)

नेपाल-मण्डल - मध्यमाञ्चल पहाडी क्षेत्र

नेपाल-उपत्यका - उपत्यका/ काठमाडौं उपत्यका

'नेपालमण्डल' शब्द सर्वप्रथम काठमाडौं ज्ञानेश्वरस्थित लिच्छवि राजा जयदेवको ( ई. ७१३-७३३) को अभिलेखमा उत्कीर्ण भएको पाइन्छ (वज्राचार्य, १०९३ : ५७३)। जुन तत्कालीन समयमा नेपाल देशको रूपमा बुझाउनका लागि विभिन्न शव्दको पर्यायको रूपमा प्रयोग भएको हो। तत्कालीन समयमा प्रयोग भएका शव्दहरू निम्न छन् - ***नेपालराज्य*** (ई. ४६४), ***नेपालभू*** (ई. ६४०), ***नेपालभुक्ति*** (ई. ७०५)। यीमध्ये नेपालमण्डल शब्द पछिल्ला समयसम्म पनि व्यापक प्रयोगमा आएको पाइन्छ। जुन देशको रूढको रूपमा लिइन्छ। जसलाई 'नेपाल' मात्रै भनेर प्रयोग गरेको पाइन्छ। यस्को अर्थ नेपालमण्डल हो। हाल आएर यो शब्दको विस्तार भै अखण्ड नेपाल-अधिराज्य हुन पुगेको छ।

नेपालमण्डल दुवैतिरबाट चेपुवामा परेको छ। एकातिर, विस्तारित अर्थको प्रयोगले यो नेपाल अधिराज्यजस्तै विशाल र ब्राह्मण क्षत्रीहरू स्वयम् पनि नेपालमण्डलका बासिन्दा हुन् भनी पृथ्वीनारायण शाहको नेपालमण्डलमाथिको विजयलाई नै 'पुनः एकीकरण' भन्दै आएका छन्। जस्को नेतृत्व संशोधन-मण्डलले गर्दै आइरहेको छ।

अर्कोतर्फ, यो उपत्यकालाई मात्र चिनाउने शब्दको रूपमा लिइन्छ। यस्तो संकुचित भई नेपाललाई अर्थ्याउनेहरूमा विदेशी विद्वान र नेवार बौद्ध संस्था एवं विद्वान्हरू नै हुन्। नेपालमण्डललाई लिएर अघि सारिएको विस्तारित र संकुचित रूपमा अर्थलाई लिएर विशेष अध्ययन गर्न योग्य देखिन्छ।

यहाँ नेपालमण्डलको वास्तविक क्षेत्रको विशेष चर्चा गर्ने प्रयास गरिनेछ। संक्षिप्तमा भन्ने हो भने मल्लकालीन काठमाडौं, भक्तपुर, ललितपुर र दोलखाको संयुक्त राज्यक्षेत्र नै नेपालमण्डलको क्षेत्र हो। अर्थात् हालको मध्यमाञ्चल विकास क्षेत्रभित्रका १२ वटा पहाडी जिल्ला हुन्। नेपालमण्डलको पूर्व र पश्चिमको क्षेत्रबारे हालसम्म कायम सांस्कृतिक परम्पराले पनि झल्काएको पाइन्छ। बर्सेनि गोरखादेखि काठमाडौं हनुमानढोकासम्म ल्याइने फूलपाती यस्को उदाहरण हुन्। छजना मगर श्रमिकले गोरखाबाट बोकेर बूढीगण्डकी पार गरी ल्याइने फूलपाती धादिङको जीवनपुर सम्म ल्याई पुऱ्याउँछ। दसैंको अवसरमा ल्याइने फूलपाती जीवनपुर पुगेपछि काठमाडौंबाट गएका चारजना ब्राह्मण पुरोहितले जमलसम्म ल्याउँछन्। जमलदेखि गुर्जुको पल्टन, लावालस्करसहित हनुमानढोकास्थित मूलचोकमा अवस्थित तलेजुस्थानमा लगिन्छ (रञ्जितकार १९९४ : १) यस आधारमा पनि गोरखा राज्यबाट नेपालमण्डल क्षेत्रको धादिङमा फूलपाती हस्तान्तरण गर्नुपर्ने परम्परा प्रतीकात्मक रूपमा कायम रहेको छ।

राजा रणबहादुर शाहको शासनकालमा घटित एउटा मर्मस्पर्शी घटनाको चित्रण गरी एक अज्ञात कविले आफ्नो सिर्जना गरेको पाइन्छ। लेखिएको छ -

सिम्ह मचा उये मदु, मचा गालय् थुने मदु
परजाया गथिन हवाल ॥ १६ ॥
बाम्ह मचा मामं ज्वंसे, बाम्ह मचा बुबां ज्वंसे
तामाखुसी कुतंकाव छ्वत ॥ १७ ॥
स्वामी जुजुया धर्म मदयाव, कचिमचा वाके छ्वत
वनेमाल तामाखुसी पारि ॥ १८ ॥

(मरेको बच्चा जलाउन निषेध छ, गाड्न पनि निषेध
प्रजाको कस्तो हालत भयो ॥ १६॥
आधा बच्चा आमाले समाई, आधा बाबुले
तामाकोसी खसाले ॥१७॥
स्वामी राजा धर्महीन भएपछि, कचिमचा (विफरग्रस्त बच्चा) फाल्न पठायो
जान पऱ्यो तामाकोसी पारी ॥ १८ ॥ )
(कसा : १०८३ : ७४)

उक्त घटना नेपालसंवत ९२५ (विसं १८६२) मा घटित घटना हो । (वैद्य २०५९ : २७१ -२) उक्त घटना घटेको समयमा राजा रणबहादुर शाहले बालक गीर्वाणयुद्धविक्रम शाहलाई बिफरबाट बचाउन उपत्यकामा बिफरग्रसित बालबालिकाहरू 'कचिमचा' (कछि-मचा कइ-मचा अर्थात् खटिराग्रस्त बच्चा) पाल्नेहरूलाई नेपालमण्डलबाट निकाला गरेका हुन । तत्कालीन समयमा तामाकोसीसम्म 'सदर उपत्यका' केन्द्रीय प्रशासनले शासन चलाउने भएकै कारणले बिफरग्रस्त बालबालिकालाई उक्त नदीपारि निकाला गरेका हुन् ।

नेपालमण्डलको क्षेत्रको संकेत इतिहासका अन्य पक्षबाट पनि स्पष्ट देखिन्छ । सूर्यमणि अधिकारीको पश्चिम नेपालको खस अधिराज्य (२०५३: प्रस्तावना ६) ग्रन्थमा 'खस अधिराज्य'को पूर्व सीमानाको रूपमा त्रिशूली नदीलाई दिइएको छ । पं. काशीराम सूरिले शकसंवत् १६३६ (नेसं ८३४) मा रचना गर्नुभएको गण्डकी-महात्म्यको भूमिका श्लोकमा योगी नरहरिनाथले गण्डकी क्षेत्रको स्पष्ट रूपमा सीमांकन गरेको छ ।

'कृष्णाप्राच्यां त्रिदशमहितं शूलनद्याः प्रतीच्यां

(कालीगण्डकीदेखि पूर्व, देवदेवीहरू सम्मान गरिएको त्रिशूली नदीदेखि पश्चिम)

(अधिकारी २०५५: प्रस्तावना १३)

यस आधारमा पनि नेपालमण्डलको पश्चिमी सीमा त्रिशूली नदी हो भन्न सकिन्छ ।

हाल आएर नेपाल अधिराज्यको पुनर्संरचना जातीय आधारमा गर्नुपर्ने सम्पूर्ण राजनीतिक दलहरूले प्रस्तावित किराँत (वा खम्बुवान) स्वायत्त प्रदेशको पश्चिमी सीमा तामाकोसी, लिखुकोसीलाई लिँदै आएका छन् ।



## १. प्रजा

निश्चित भूभागको रूपमा रहेको नेपालमण्डलमा विभिन्न कालखण्डमा विभिन्न स्थानबाट बसोबास गर्नेहरूको ओइरो लाग्न थाल्यो । त्यसैले यो भूभाग कुनै जाति विशेषको भूभागको रूपमा नरही विभिन्न समुदायको आदिभूमिको रूपमा रहेको छ । नेपालमण्डलमा तीन हजार वर्षदेखि नै बसोबास गर्दै आइरहेका छन् । ईशापूर्व एक हजार वर्षअघिदेखि नै यहाँ उत्तर र उत्तरपूर्वबाट तिब्बतबर्मेली भाषाभाषीहरू आउने क्रम सुरु भयो । यसरी आउनेहरू नै गोपाल, महिषपाल र किराँती हुन् । ईश्वीको प्रारम्भताका दक्षिण र दक्षिण पश्चिमबाट लिच्छवि, कोली, शाक्य, वर्मा, गुप्त सेन आदि समूह आउन थाले । यसरी बसाई सर्दै आउनेहरूले नै पहिलो शताब्दीमा नेपालमण्डलमा संघराज्य स्थापना गर्न पुगे । देव (लिच्छवी), वर्मा, गुप्तहरूबीच संघीय परम्पराअनुसार छानिएका व्यक्तिलाई नै राजा बनाउने परम्पराको थालनी भयो । पछिल्ला समयमा वर्माकाल (ई. २- ४ शदी) मा वंश परम्परामा आधारित भई राजा बन्ने क्रमको विकास भयो । यसपछि लिच्छविकाल (ई. ५-९) सम्म यही क्रम चल्यो ।

लिच्छविकालमा आएर नेपालमण्डलसँग जोडिएको तिब्बतको चाङ प्रदेशका बासिन्दा नेपालमा विभिन्न कामकाजको क्रममा व्यापक रूपमा आवतजावतको क्रम सुरु भयो ।

यसरी आउने जाने गर्नेहरू नै नेपालमण्डलमा नै स्थायी रूपमा बसोबास गर्नेहरूको संख्यात्मक वृद्धि हुन थाल्यो । सोही क्रममा आठौं शदीमा राजा नरेन्द्रदेवले तिब्बत चाङ प्रदेशका बासिन्दालाई सैनिकको जिम्मेवारी दिई नेपाल भित्र्यायो । नेपालमण्डलभित्रका बासिन्दाले भने उनीहरूलाई उनीहरूको प्राचीन बसोबासस्थलको नामबाट संज (चाङ) नामाकरण गर्न थाले । उनीहरू ता (घोडा) चढेर आएका माङ (मान्छे) भएका हुनाले पहाडबाट आएका हुनाले तामाङ भन्न थाले । यसरी एउटै समूहको दुईवटा नामकरण हुन पुगेको छ । नेवारहरूले संज (सँय्) र अन्यले तामाङ भन्न थाले । उनीहरूले आफ्नो आदिम थलोको 'पन' लाई भने कायम गरे, अर्थात् उनीहरू नेवार समूहमा भने विलय भएनन् । यसरी नेपालमण्डलमा लिच्छविकालमा नेवार र सँय् अर्थात् तामाङ दुई छुट्टाछुट्टै समूह बासिन्दाको रूपमा बसोबास गरे । मल्लकालमा उनीहरूलाई 'संज-प्रजा' को मान्यता दिनुको साथै सामाजिक कार्यमा समेत उनीहरूको भूमिका स्पष्ट बन्न पुगेको देखिन्छ । राजा जयप्रकाश मल्लले नेपालसंवत् ८८० मा रचना गरेको 'रत्नेश्वरप्रादुर्भाव' नाटकको यसरी निर्देशनसमेत दिएको छ ।

'थन सँजपनिसेन देओ ओयकु, ख्याल मालको'

(कसा: १०८३ : ४७)।

(यहाँ धामी चढेका तामाङहरूले ठट्टा गर्ने गर्छन् ।)

नेपालसंवत् ८३६ कात्तिकशुक्ल एकादशीका दिन भक्तपुरका राजा भूपतीन्द्र मल्ल काठमाडौंको शिवपुरीमा स्नान गर्न पुगेका थिए । उक्त समयमा आठजना 'साज' (सँय-तामाङ) हरूलाई चार पैसाको दरमा ज्याला दिएर बाटो सुधार (ला ल्होङ, र बाटो सरसफाइ) गर्न दिएको यहाँ स्मरण गर्न योग्य देखिन्छ ।

दं ६ सोमायिता बजभाग

दं ८ ला ल्होङ साजतोस्ता

दं ४८ दुल्यातोस्ता

दं ३२ ला ल्होङ साजतोस्ताता म्हं ८

दं १२ लप्ते ङ्याङ

(बी ४१/५, पत्र १ लिउ १-५)

(तीनजनालाई ६ दाम तमाखु/ बाटो मर्मत सुधार गर्ने तामाङहरूका लागि आठ दाम/ डोली बोक्नेहरूलाई ४८ दाम/ बाटो सुधार गर्ने आठ तामाङका लागि ३२ दाम, १२ दामको सालको पात किन्यौं । )स्वाभाविक रूपमा बासस्थान फेर्दै आएका नेपालमण्डलबासीहरू नै ईशापूर्व एक हजार वर्ष र पछिको एक हजार वर्ष अर्थात् दुई हजार वर्षको अवधिभित्र उत्तर, पूर्व, दक्षिण, पश्चिमबाट आएका तिब्बत वर्मा र आर्य भाषाभाषी मिसिन गई एउटा नयाँ समूह विकास हुन पुग्यो । दोस्रो सहस्राब्दिको आसपास यस्को स्पष्ट पहिचान हुन थाल्यो, - नेपाल-संस्कृति, नेपाल-कला, नेपाल-संवत्, नेपाल-भाषा, नेपाल-लिपि आदि । यो नयाँ विकसित जाति समुदायलाई 'नेपाल' शब्दको नै प्राकृत रूप नेवाल (नेवार) भन्न थाले । नेपालमण्डल मूलतः यही समुदायको आदिभूमि हो । नेवार सभ्यता नेपालमण्डलमा चारैतिरबाट आएका समुदायको संस्कृति मिसिन पुगी बनेको अष्टधातु हो ।

ईश्वीको दोस्रो हजार वर्षको सुरुमा शकसंवत् १०१९ (नेसं २१२) मा सिम्रौनगढमा कर्णाटक सेनापति नान्यदेवले द्रय (तिरहुत) राज्य स्थापनापश्चात् नै द्रय( मैथिल)हरूले नेपालमण्डलमा आँखा गाडेका थिए । गोपालराजवंशावलीको आधारमा उनीहरूले नेसं २३१ देखि ४३१ सम्म दुई सय वर्षभित्र धेरैपटक हमला गरे । अन्तिममा नेसं ४३४ मा द्रय राजा हरिसिंहदेवसँगै तत्कालीन नेपालमण्डलभित्रका कार्यकारी र ाजासरहका रुद्र मल्लकी बहिनी देवलदेवीसँग विवाह भएपछि तिरहुत - नेपालमण्डल मित्र राष्ट्र बन्न पुग्यो । पछि आएर कार्यकारी राजासरहका रानी देवलदेवीकी पुत्र जगत्सिंहले परम्परागत मल्ल वंशलाई कर्णाटक मल्लवंशमा परिवर्तन गरेपछि १२औं शदीदेखि नेपालमण्डलमा बस्न आएका द्रय समुदाय नेवारमा समाहित भए । उनीहरूले पृथक् प्रजाको रूपमा दाबीसमेत गरेनन् ।

गोपालराज वंशावलीले नेसं ४०८देखि४५४ सम्म खसराजाहरू जितारी, रिपु, आदित्य र पुण्य मल्लहरू सात पटकसम्म नेपालमण्डलमा युद्ध र तीर्थयात्रा गर्न निस्केको अभिलेखहरूमा उल्लेख छ । (अधिकारी २०५३:४५) उक्त प्रमाणको आधार मा १३ शदीदेखि पर्वतिया/ खस जातिका मानिसहरू नेपालमण्डलमा आउन थालेको भनी बुझ्न सकिन्छ । उनीहरूको संख्या वृद्धि हुँदै गएपछि मल्लकालमा तिनीहरूलाई पृथक् पर्वतिया/खस प्रजाको रूपमा मान्यता दिए । नेसं ८३२-८३३ को राजकुमार र णजित मल्लको विवाहसम्वन्धी धरोतग्रन्थको एक स्थानमा लेखिएको छ :-

सम्वत् ८३३ का सु १२ (पत्र ४१८अ६) श्री २ रणजित मल्लया
एहेयातं पर्व्वतियाया सेवाकु दुकाया ।
मणिधर थापाया दापचारीया ।
ग्वा २९ थेका त च ग्व १२ फतसे ।
ग्व ९ तुसे
ब्राह्मण खस पाचया सेवाकुया (पत्र ४२५अ१) सथिक ॥

(ए ६१०/२८-ए ६११/१)

(नेसं ८३३ कात्तिक शुदि १२ युवराज रणजित मल्लको
विवाहका लागि पर्वतियाको सेवाकु भित्र्याई
मणिधर थापा दापाचारीको
पान २९ (थेका त च ?), १२ वटा फर्सी
९ वटा काँको
ब्राह्मण खस पञ्च-प्रजा) सेवाकुको जम्मा ।)

नेपालको इतिहासमा सुल्तान शमसुद्दिनको नेपालसंवत् ४७० मंसीरमा गरेको हमला प्रसिद्ध छ । उक्त समयमा शमसुद्दिनले भक्तपुरमा आगो लगाइदिएका थिए । पशुपति तीन टुक्रा बनाएको र स्वयम्भू भत्काइदिनुको साथै ललितपुरको पिंबहाल ध्वस्त गरेका थिए । यसबाट १४ औं शताब्दीदेखि नेपालमण्डलभित्र मुसलमानको प्रवेश भएको भन्न सक्छौं । पछि मल्ल राजाहरूले मुसलमान प्रजाहरूलाई केही स्थान दिए । उनीहरूले आफ्नो धर्मसंस्कृति कायम गरिरहे । तर उनीहरू नेपालमण्डलको सयौं वर्ष अघिदेखि बस्दै आएको हुनाले 'नेवार मुसलमान' को पहिचान बोकेर नेपाली भइरहेका छन् ।

यसरी नै नेपालमण्डलमा 'नेवार ईशाई' हरू पनि रहेका छन् ।

यसरी नेपालमण्डलमा एकथरी मूल समुदाय नेवार रहे पनि अर्कोतिर यहां

पृथक् पहिचान बोकेर आएका गैरनेवार प्रजाहरू पनि बस्दै आएका छन् । तिब्बत, बर्मेली भाषभाषी, थामी, जिरेल, सुरेल, चेपाङहरू पनि नेपालमण्डलका आदिवासी हुन् ।

## ३. क्षेत्र

चांगुस्थित मानदेवको विजय स्तम्भको आधारमा पनि लिच्छविकालमा नेपालमण्डल आजको मध्यमाञ्चल विकास क्षेत्र झैं विशाल रहेको मान्न सकिन्छ । उक्त स्तम्भ अभिलेखनमा 'पूर्वदेशाश्रयाः सामन्ताः' (पूर्वदेशका सामन्तहरू) मानदेवको पाउमा झुकेको र पश्चिम 'गण्डकी' मा हात्ती चढी गई मल्लपुरी जिती फर्केको उल्लेख छ। (वज्राचार्य : २०२१ : १३) आजसम्म प्राप्त करीब २५० अभिलेखको आधार मा लिच्छवि कालमा नेपालमण्डलको विशालता अनुमान गर्न सकिन्छ। पूर्वमा दुम्जा (रामेछाप) मा अंशुवर्माको अभिलेख फेला परेको छ भने पश्चिम (केवलपुर) धादिङमा ध्रुवदेव र जिष्णु गुप्तको अभिलेख फेला परेको छ। त्यसैगरी दक्षिण तिस्तुङ, चित्लाङ (मकवानपुर) मा अभिलेख प्राप्त भए पनि उपत्यकाबाट उत्तरदिशामा भने शिलालेख फेला परेको छैन । हालै धादिङको अगौटागाउँको सल्यानटारमा लिच्छवि बस्तीको अवशेष फेलापरेको छ। (गोरखापत्र २०५४: १,११)। पश्चिम गोरखास्थित गोरखनाथ गुफामा प्राप्त मानदेवसंवत् १२२ (ई. ६९८) को शिवदेवको अभिलेख नेपालमण्डलको क्षेत्रभन्दा बाहिर परे पनि वाङ्मय एवं इतिहास अनुसन्धाता दिवाकर आचार्यको अनुसार उक्त अभिलेख सल्यानटारबाटै लगेको हुन सक्छ । (कुराकानी)

नेसं ५५० आसपास १५ औं शताब्दीतिर एक अज्ञात लेखकले नेपालमण्डलको धार्मिक, सांस्कृतिक भूगोल लेखे 'नेपाल-महात्म्य' को नामले चिनिन्छ। उक्त पुस्तकमा नेसं ५२८ मा पशुपतिस्थित राजेश्वरी मन्दिर निर्माण गरेको प्रसंग उल्लेख छ। (टण्डन २०५६: ५३) सोही महात्म्यमा २५ शिवलिङ्गको चर्चा गरिएको छ। (मल्ल : १९९१: १४८) नेपालमहात्म्यको अध्याय १५ श्लोक ३-५ मा 'नेपालक्षेत्र' बारे स्पष्ट उल्लेख गरिएको छ :-

पूर्व - पुण्यवती, सर्वपापनाशिनी कौशिकी (तामाकोसि, रामेछाप)

पश्चिम - त्रिशूलगङ्गा (त्रिशूली , नुवाकोट)

उत्तर - शिवपुरी (गोसाईंकुण्डक्षेत्र, रसुवा)

दक्षिण - शीतलोदका नदी (चीसापानी, कुलेखानी , मकवानपुर)

**नेपालमहात्म्य**मा लेखिएको उक्त श्लोकलाई लिएर लेखकहरूले आ-आफ्नै ढंगले व्याख्या गर्ने गरेका छन् । (खनाल : २०२८: १६३, आचार्य १९९२: १६८ । (हेर्नुहोस परिशिष्ट १)अनुमानित नेसं ७५० आसपास अर्थात् १७ शताव्दीमा

लेखिएको हिमवत्खण्डमा पनि नेपाललाई देवक्षेत्रको सीमाको रूपमा परिभाषित गरिएको छ। उक्त पुस्तकको अध्याय ७० मा यसरी वर्णन गरिएको छ।

पूर्व - कौशिकी (कोशी)

पश्चिम - गण्डकी (गण्डकी)

उत्तर - नीलकण्ठ (गोसाईंकुण्ड, रसुवा)

दक्षिण - नटेश (नटारम्भेश्वर, महादेवटार, मकवानपुर)

संक्षिप्तमा भन्नुपर्ने भएकोले प्रस्तुत श्लोकमा पूर्वमा तामाकोसीको स्थानमा कौशिकी र पश्चिममा त्रिशूली गण्डकीको स्थानमा गण्डकीमात्र उल्लेख गरिएको छ। यद्यपि माथिको सीमाक्षेत्र नेपाल महात्म्यसँग सामीप्यता रहेको छ। हिमवत्खण्डको यस श्लोकलाई अन्यले अर्को अर्थ लाग्नेगरी व्याख्या गरेको छ। (हेर्नुहोस परिशिष्ट २)

नेपाल महात्म्य र हिमवत्खण्डको परिभाषाअनुसार १५-१७ शताब्दीमा नेपालमण्डलको क्षेत्र निम्न प्रकारको रहेको ज्ञात हुन आउँछ।

पूर्व - तामाकोशी, रामेछाप

पश्चिम - त्रिशूलीगङ्गा, नुवाकोट

उत्तर - शिवपुरी/नीलकण्ठ, रसुवा

दक्षिण - शीतलोदकानदी/नटेश शिवलिङ्ग तीर्थ, मकवानपुर

हिमवत्खण्डमा चतुषष्ठी शिवलिङ्ग स्नानयात्रासम्बन्धी चर्चा गरिएको छ। ६४ शिवलिङ्गको क्षेत्रको समेत वर्णन गरिएको छ। प्रस्तुत नेसं ८८३ को शिवलिङ्ग यात्रासम्बन्धी अभिलेखमा समेटिएको क्षेत्र (स्थान) वर्तमान जिल्ला विभाजन अनुसार यस प्रकार रहेको छ :-

| | |
|---|---|
| १. रामेछाप (दुम्जा, कुशेश्वर) | - १ |
| २. दोलखा (भीमेश्वर) | - १ |
| ३. काभ्रे (काफेश्वर, आदि) | - १० |
| ४. ललितपुर (चम्पेश्वर, लेले, आदि) | - ११ |
| ५. मकवानपुर (नटारम्भेश्वर, आदि) | - ८ |
| ६. कान्तिपुर (गोपालेश्वर, फर्पिङ, आदि) | - २४ |
| ७. नुवाकोट (भैरवेश्वर, देवीघाट, आदि) | - ३ |
| ८. भक्तपुर (वागीश्वर आदि) | - ६ |
| जम्मा | ६४ |

(हेर्नुहोस परिशिष्ट ३)




नेपालमण्डलको यसरी निर्धारण भइरहेको क्षेत्रमा यक्ष मल्ल(५४९-६०२) को सन्तान राजा जगज्ज्योर्तिमल्लले लेखेको स्वरोदयदीपिका (नरपतिजयचर्या-टीका)मा शकसंवत् १५३६ लसं ४९४ अर्थात नेपालसंवत ७३४ मा यक्षमल्लले राज्यविस्तार गरेको उल्लेख गरिएको छ :-

पूर्व - बङ्गदेश (बङ्गाल/बङ्गलादेश)

पश्चिम - गोरखा-पाल्पा

उत्तर - सप्ताहगम्या भूमि (सातदिन पैदल हिंड्नुपर्ने स्थान, तिब्बत)

दक्षिण - सुरनदी (गंगा)

(हेर्नुहोस परिशिष्ट ४)

यक्षमल्लले चर्चा गरेको राज्यविस्तारको उक्त प्रसंग नेपालसंवत ९१३मा नेपाल आएका कोलोनल कर्कपेटिकले (१७९३:२६६) दुईसयवर्ष अघि नै सुनेको पाइएको छ ।

(हेर्नुहोस परिशिष्ट ४)

यसो हो भने नेपालमण्डलको तत्कालिन समयमा राज्य विस्तार भएको मान्नुपर्ने हुन्छ । निश्चित भूभागबारे **नेपालमाहात्म्य, हिमवत्खण्डमा** चर्चा गरिएको भूमिमात्र हो ।

मल्लकालिन ऐतिहासिक घटनावलीको एक स्थानमा लेखिएको छ : -

राजाधिराज परमेश्वर राजा शिवसिंह मल्लको शासनकालमा दोलखा समेत वं (पूर्वं), यं (उत्तर)मा लिस्ति, केरुङ, त्यहाँबाट यौ (पश्चिम) गण्डपार (त्रिशूलगण्डकी पार = धादिङ) र यि (दक्षिण) (यो) पश्चिम सिन्धुली मकवानपुरसम्म राज्य गरे ।

(हेर्नुहोस परिशिष्ट ५)

उपरोक्त प्रमाणका आधारमा यक्ष मल्ल (५४९-६०२) पछि छिन्नभिन्न बन्न पुगेको नेपालमण्डल शिवसिंह मल्लले (६९८-७४०) पुनः एक पटक एकीकरण गर्ने प्रयास गरेको देखिन्छ । काठमाडौंका राजा शिवसिंहले पूर्वमा सिन्धुली, पश्चिममा धादिङ, उत्तरमा दोलखा केरुङ र दक्षिणमा मकवानपुर सम्म विस्तार गरेका थिए ।

पूर्व - सिन्धुली

पश्चिम - धादिङ

उत्तर - दोलखा, केरुङ

दक्षिण - मकवानपुर

उक्त राज्य विस्तारको चर्चा इतिहासकार धनवज्र वज्राचार्य (२०३०:७०) ले पनि गर्नुभएको छ ।

नेसं ८०० मा (१८-१९ शदी) नेपालमण्डलमा बौद्ध तन्त्र हेवज्रसंवरोदय, ज्ञानोदय, वज्रवाराही योगराजोत्तमरहस्य, चक्रसंवर हेरुकाभीसमय आदिको प्रभावबाट वज्राचार्यहरूले चतुर्विंशति न्यास गर्ने क्रममा चक्रस्वरूप वीजाक्षर उच्चारण गरी देहस्थ नाडी पीठ छोएर जम्बुद्वीपको बाह्यपीठ भावना गर्ने परम्पराको विकास हुनपुग्यो । जम्बुद्वीपको बाह्यभूमिको रूपमा पीठ, क्षेत्र, छन्दोह, मेलापक, पीलव, श्मशान र त्यसका उपभूमि रहेको मानिआएको छ । यसलाई तीनवटा चक्र (चित्त, वाक् र काय) स्वरूपमा लिने गरिन्छ। (लाल १९८६) वज्राचार्यहरूले नेपालमण्डल भित्र तीनचक्र/तहमा २४ पीठ रहेको विश्वास गरी वज्राचार्यत्व प्राप्तिका लागि एक वर्षसम्म पीठसेवा जाने परम्परा अद्यापि कायम छ । नेपालमण्डलमा जम्बुद्वीपको पीठको रूपमा ग्रहण गरेर हेर्दा वज्राचार्यहरूले दुईवटा चक्रको विकास गरेको छ । (हेर्नुहोस् परिशिष्ट ६) वज्राचार्यहरूले काठमाडौंको इन्द्रचोक-स्थित कान्तीश्वर क्षेत्रपाललाई केन्द्रविन्दु वनाई तेस्रो चक्र (काय) को क्षेत्र निम्न बमोजिम निर्धारण गरेको छ ।

पूर्व - ओतीर्थ - दुम्जा, रामेछाप

समेदा - दोलालघाट, काभ्रे

पश्चिम - देवीघाट, त्रिशूली, नुवाकोट




कपिलास - नुवाकोट

दक्षिण - झंगु - कोदुवाल, काठमाडौं

दक्षिणकाली - फर्पिङ, काठमाडौं

उत्तर - सादुकुना - सांखु, काठमाडौं

तुप्या - नवलिंग, बुढानीलकण्ठ, काठमाडौं

अर्कोतिर शैवतन्त्रानुसार विकसित द्वीप, क्षेत्र, देवी, मातृकापीठले घेरिएको गुह्येश्वरी केन्द्रबिन्दु बनाई 'नेपालमण्डलपीठ' को विकास भएको पाइन्छ। यो पीठ विशेष गरी उपत्यकाभित्र तीनवटा मण्डल वा आवरण (८ X ३) र एउटा त्रिकोणको स्वरूपको चौथो आवरणको स्वरूपमा लिइएको छ।

उक्त पीठबारे सत्रौं शताब्दीमा चण्डपितामहले लेखेको ग्रन्थ (ए २४२/१) फेला परेको छ। जसमा उल्लेखित कतिपय पुराना नामहरू पत्ता लगाउन सकिएको छैन। (हेर्नुहोस् परिशिष्ट ७)

यसै क्रममा नेसं ८११ को एक कर्मकाण्डीय ग्रन्थमा (ए १२५०/१७) पनि माथि पीठको उल्लेख भएको छ।

मल्लकालीन समयमा नेपालमण्डलमा चारवटा छुट्टाछुट्टै स्वशासित राज्यको विकास भयो। ती राज्यमध्ये कहिले भक्तपुर, कहिले काठमाडौं राज्यअन्तर्गत २ वा ३ राज्य समाविष्ट भएको पाइन्छ। जे भए पनि चारवटा राज्यको आ-आफ्नो प्रभाव क्षेत्र भने थियो। त्यसलाई लिएर वर्तमान जिल्ला विभाजनसँग दाँज्यो भने प्रभाव क्षेत्र र त्यसअन्तर्गतका जिल्ला स्पष्ट हुन आउँछ।




१. कान्तिपुर राज्य - काठमाडौं जिल्ला, नुवाकोट, धादिङ, रसुवा, सिन्धु (आंशिक)

ख. मोफसल .- (१) पहाड (२) भित्रीमधेश (३) तराई

१.१) पूर्वी पहाड - पूर्व १ नं. (काभ्रे-पलान्चोक, सिन्धु-पलान्चोक)

पूर्व २ नं. (चिसंखु = रामेछाप, दोलखा)

१.२) पश्चिमी पहाड - पश्चिम १ नं. (नुवाकोट (रसुवा समेत), धादिङ)

२.१) पूर्वी भित्री मधेश- सिन्धुली

२.२) पश्चिमी भित्री मधेश- चिसापानी (मकवानपुर)

पञ्चायतकालमा (विसं २०१८ सालमा ) नेपाल अधिराज्यलाई १४ अञ्चल र ७५ जिल्लामा विभाजन गरेपछि नेपालमण्डलको सीमा १२ जिल्ला तीन अञ्चल (पूर्ण वा आंशिक) र मध्यमाञ्चल विकास क्षेत्रको भूभाग पर्दछ। (तमोट : २०६४: ६)

नेपाल अधिराज्यको पछिल्लो प्रशासनिक विभाजनमा नेपालमण्डलको सीमा केही विस्तार भएको छ । नेपाल महात्म्य र हिमवत्खण्डले गरेको परिभाषा र पछि विस्तार भएको क्षेत्र यस प्रकार रहेको छ ।

| दिशा | नेःम.-हि.ख.सीमाना | मध्यमाञ्चल सीमाना |
|---|---|---|
| पूर्व | तामाकोशी | लिखुकोशी |
| पश्चिम | त्रिशूलगङ्गा | बूढीगण्डकी |
| उत्तर | नीलकण्ठ/शिवपुरी | तिब्बत(चीन) सीमा |
| दक्षिण | चुरिया पहाड श्रृंखला | हेटौंडा नगरपालिका |

वर्तमान लोकतान्त्रिक नेपाल राज्यलाई लिएर पुनर्संरचना गर्नुपर्ने आवश्यक्ता रहेको छ। पुनर्संरचना गर्ने क्रममा ऐतिहासिक, भौगोलिक तथा सांस्कृतिक रूपमा नेपालमण्डल स्वायत्त प्रदेश नेपाल अधिराज्यभित्र कायम हुनुपर्ने देखिन्छ। जुन अन्त-र्राष्ट्रिय राज्य ढाँचाअनुसारको राजधानीयुक्त केन्द्रीय प्रदेश हुनेछ । नेपालमण्डल करीबकरीब मण्डलाकार भूक्षेत्र भएकोले यसलाई तीनवटा उपप्रदेशको रूपमा जिल्ला विभाजन गर्न सकिन्छ।

१. केन्द्रीय (३ जिल्ला) - काठमाडौं, ललितपुर र भक्तपुर
२. मध्य (४ जिल्ला) - काभ्रे, सिन्धु, नुवाकोट, मकवानपुर
३. वाह्य (५ जिल्ला) - धादिङ, रसुवा, दोलखा, रामेछाप, सिन्धुली

(तमोट २०६४:१)

## ४ निष्कर्ष :

लिच्छवि राजा मानदेव(ई. ४६४- ५०५)देखि हालसम्म (१५४० वर्ष भन्दा बढी ) अविछिन्न रूपमा नेपालमण्डलको सीमा मध्यमाञ्चलको सीमा मध्यमाञ्चल पहाडी प्रदेशको सांस्कृतिक क्षेत्रको रूपमा लिंदै आएको छ। मल्लकालीन समयमा पटकपटक यहाँका राज्य वा सीमा एक अर्कोबीच गाँसिएर चारवटा स्वशासित राज्यको रूपमा अघि बढेको देखिन्छ। पछिल्लो समयमा मल्लकालीन चार स्वशासित क्षेत्रलाई प्रशासनिक निकायको रूपमा विभाजन गर्ने क्रममा १२ जिल्लाको रूपमा अघि सारेको छ। जुन वर्तमान स्वरूप नै हो। २०४६ सालको राजनीतिक परिवर्तनसँगै विसं २०४७ सालमा संविधान लागू भएको एक वर्षपछि नै नेपालमण्डलको सीमा टुक्र्याउने प्रस्ताव आउन थालेको थियो ।

नेपालको संविधान २०४७ मा क्षेत्रगत र जातिगत पार्टीलाई राष्ट्रिय पार्टीको रूपमा नलिने नीति रहेको छ। जुन नेपालको राष्ट्रिय अखण्डतालाई

लिएर गरेको निर्णय हो । साथै मान्यता नभए पनि प्रादेशिक, जातिवादी र अन्य पार्टी संगठन खोलेर आ-आफ्नो आवाज भने राख्दै आएका थिए । यसरी आवाज उठाउने पार्टीहरूले नेपालमण्डललाई यसरी विभाजन गरेका छन् ।

जनजाति पार्टी, विसं २०४८- ताम्बासालिङ नेपाल

किराँत वर्कर्स पार्टी, विसं २०५८- ताम्बासालिङ, नेवारप्रदेश

नेकपा माओवादी विसं २०६०- तामाङप्रदेश, नेवारप्रदेश

(बराल : २०६१:७५, १०८, १८४)

यसै क्रममा व्यक्तिगत रूपमा पनि कतिपय व्यक्ति यी पार्टीहरूले प्रस्तुत गरेको अवधारणाको आडमा आ-आफ्नै राज्य संरचना बनाउनुपर्ने प्रस्ताव अघि सारेका छन् । यसरी नयाँनयाँ राज्य संरचनाको अवधारणा देखा परेपछि नेपालका राष्ट्रिय पार्टीहरू पनि प्रभावित हुन थालेका छन् । सद्भावना पार्टीले विसं २०५० मा नेपालमण्डल क्षेत्रलाई 'मध्यपहाडी प्रदेश' को रूपमा लिएका छन् ।

(बराल २०६१: ६९)

नेपाल अधिराज्यको कुल क्षेत्रफल १,४७,१८१ वर्ग किलोमिटर रहेकोमा नेपालमण्डलले जम्मा १२.७० प्रतिशतमात्र भूभाग ओगटेको छ। अर्थात् नेपालमण्डलको कुल क्षेत्रफल १,४८,७४२ वर्ग किलोमिटरमात्र रहेको छ ।

नेपालमण्डलभित्र रहेको १२ जिल्लाको क्षेत्रफल निम्नबमोजिम रहेको छ ।

| क्षेत्र | क्षेत्रफल (वर्ग किलोमिटर) | | प्रतिशत |
|---|---|---|---|
| नेपालमण्डल | | १८७४२ | १००% |
| वाह्य जिल्ला | | १०२४० | ५४.६४% |
| धादिङ | २९५९ | | |
| रसुवा | १२६५ | | |
| दोलखा | २०५३ | | |
| रामेछाप | १५४४ | | |
| सिन्धुली | २४१९ | | |
| मध्य जिल्ला | | ७४०५ | ३९.१५% |
| काभ्रे | १४४६ | | |
| सिन्धु | २५२८ | | |
| नुवाकोट | ११९३ | | |




## नेपालमण्डलभित्रको तीनप्रकारका जिल्ला

| | | |
|---|---|---|
| मकवानपुर | २२३८ | |
| वाह्य - मध्य जिल्ला (मोफसल) | १७६४५ | ९४.१५% |
| केन्द्रीय - मध्य जिल्ला (उपत्यका ) | १०९७ | ५.८५% |
| काठमाडौं | ५४५ | |
| ललितपुर | ४१३ | |
| भक्तपुर | १३९ | |

(अर्याल र अन्य २०३९: १८९- ३६०)

उपरोक्त तथ्याङ्कको आधारमा नेपालमण्डललाई माथि उल्लेखित प्रादेशिक

वा जातिवादी पार्टीहरूको अवधारणाअनुसार विभाजन गरेको खण्डमा नेवार समुदाय नेपाल अधिराज्यको सबैभन्दा सानो भूभाग (०.६५ ) को अधिकारी हुनेछ। नेपालमण्डलको स्वरूप भने यस्तो देखिनेछ।

| | | |
|---|---|---|
| उपत्यका | १०९७ वर्गकिमि | ६% |
| मोफसल | १७६४५ वर्गकिमि | ९४% |

आज चारैतिरबाट नेपालमण्डलबासीलाई संकुचन बनाउँदै लगिरहेको छ। आफ्नो इतिहास, भूगोल र संस्कृतिप्रति व्यापक दृष्टिकोणको अभावका कारण पनि यस्तो समस्या आएको हो। राजनीतिक रूपमा आवश्यक मात्रामा सचेत र सतर्क हुन नसकेको र आफ्नो व्यक्तिगत स्वार्थका लागि सामुदायिक स्वार्थको उपेक्षा गर्ने कतिपय नेपालमण्डलबासीको रोग पनि हो। राज्यको पुनर्संरचनामा नेपालमण्डललाई एक स्वायत्त प्रदेशको मान्यता दिलाउन सकिएन भने मुलुक नामकरण गर्न सफल विशेष ऐतिहासिक एवं धार्मिक महत्व बोकेको नेपालमण्डलको दुर्गति हेर्नेबाहेक अन्य विकल्प रहन्न। यस्तो हुन नदिनका लागि नेपालमण्डलबासीबीच नेपालमण्डलको अर्थ उपत्यकामात्र सीमित नभई ऐतिहासिक, सांस्कृतिक रूपमा मध्यमाञ्चलको पहाडी क्षेत्र हो भन्ने धारणा र विश्वास उत्पन्न गर्नुपर्ने अवस्था छ। नेपालमण्डलबासीबीच आफुले आफैंलाई चिन्न सकिएको खण्डमा मात्रै अरूको दुराशय बुझ्न सक्नेछौं।

आज नेपालमण्डललाई एक सभ्यता केन्द्रको रूपमा प्रस्तुत गर्नुपर्ने अवस्था छ। यहाँका विभिन्न समुदायबीच रही आएको सांस्कृतिक सम्बन्ध खोज्न तड्कारो। नेवार, तामाङबाहेकका आदिमकालदेखि यहाँ बस्दै आएका अन्य साना जाति समुदायहरूको स्थान, भूमिकासमेत नेपालमण्डलको अध्ययनको सीमाभित्र समेट्नुपर्ने आवश्यकता देखिएको छ। नेपालमण्डलको सांस्कृतिक, समुदायगत विविधतालाई नबुझी एकाध समुदायको नाममा यस्को नामकरण गरिएको खण्डमा जातीय अहंकार बढ्न पुगी नेपालमण्डलको ऐतिहासिक गरिमा तहसनहस हुनेछ। यसप्रति सबै सचेत र सतर्क हुनुपर्ने आजको आवश्यकता हो।

नेपालमण्डलले आफ्नो अस्तित्व रक्षा गर्न सकून्।



# सन्दर्भ सामाग्री

## प्राथमिक सामाग्री


ब्यक्तिगत/नेपाली-जर्मन हस्तलिखित-ग्रन्थ संरक्षण परियोजना (नेजहसंप) ई १८७४/२ मल्लकालिक ऐतिहासिक घटनावली, इतिहास, नेपाललिपि, पत्र ३०, ब्यंसफू, मिति नेसं ७११-७२४ ।

राष्ट्रिय अभिलेखालय (राअ), काठमाडौं, लगत १-११८६/नेजहसंप ए ३१/१७ नरपतिजयचर्यास्वरोदय, ज्योतिष, मैथिलीलिपि, पत्र २०२, ब्यंसफू, मिति शसं १५३६/लसं ४९४ (नेसं ७३४) ।

राअ १-४७९/नेजहसंप ए १२५०/१७ सिद्धाग्निकोट्याहुति स्थानबलिविधि, कर्मकाण्ड, नेपाललिपि, पत्र १६३, ब्यंसफू, मिति नेसं ८११.१.९ ।

राअ १-१६८९/नेजहसंप ए ६१०/२८-ए ६११/१, व्ययलेखपुस्तक (नेपाली- जर्मन हस्तलिखित-ग्रन्थ सूचीकरण परियोजना (नेजहसूप) रणजित मल्लया एहेया धरोत), धरोत, नेपाललिपि, पत्र ११७, ब्यंसफू, मिति नेसं ८३२.१.११-८३३.३.२१ ।

राअ १-८०३/नेजहसंप बी ४१/५ आयव्ययपुस्तक (नेजहसूप 'शिवपुरी चोस भूपतीन्द्र मल्ल स्नान बिज्याङाया धरोत'), धरोत, नेपाललिपि, पत्र २४, ब्यंसफू, मिति नेसं ८३६.१.११ ।

राअ १-४८५/नेजहसंप रील ल्या: ए २४२/१ नेपालमण्डलपीठ महाबलिविधि, कर्मकाण्ड, नेपाललिपि, पत्र १०३, ब्यंसफू, मिति मदु (१७ शदीपाखे) ।

## प्रकाशित सामाग्री


अधिकारी, टीकाराम (अनु.), पं. **काशीरामसूरिविरचितम् गण्डकी माहात्म्यम्** । दाङः महेन्द्र संस्कृतविश्वविद्यालय, विसं २०५५ गुरुपूर्णिमा ।

अधिकारी, सूर्यमणि, **पश्चिम नेपालको खश अधिराज्य** । कीर्तिपुरः नेपाल र एशियाली अनुसन्धान केन्द्र, विसं २०५३ असार ।

कसाः, प्रेम बहादुर, **जुजु जयप्रकाशया रत्नेश्वर प्रादुर्भाव** । यैंः च्वसापासा ।

कसाः, प्रेम बहादुर, **बाखं-म्य** । यैंः च्वसापासा, नेसं १०८३ ।

खनाल, मुक्तिनाथ (अनु.), **नेपाल माहात्म्य** । काठमाडौंः नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, विसं २०२८ ।

जोशी, हरिराम, **अभिनव संस्कृति कोष** । ललितपुरः जोशी रिसर्च इन्स्टिच्युट, विसं २०५८ ।

टण्डन, गोविन्द, **पशुपतिक्षेत्रको सांस्कृतिक अध्ययन** (दुइ भागः अभिलेख खण्ड) । काठमाडौंः भरेन्द्र शमशेर, विसं २०५६ वैशाख ।

तमोट, काशीनाथ, विसं २०६४'नेवाःभूमिकथं नेपालमण्डलया लागा ।' नेपालमण्डल फोरम, ललितपुरको आयोजनामा नेसं ११२७ दिल्ला २७ शनिवार सम्पन्न प्रवचन कार्यक्रममा वितरित टिप्पणी पत्र

तमोट, काशीनाथ, 'नेपालमण्डल-लिच्छवि अभिलेख लूगु थाय्' । **देशय्मरु भ्याः**, ३:९ (विसं २०५२ चैत्र १/चिल्ला २५ विहीवार ), पृ. ?

पन्त, विमला, 'नेपालमण्डलको संक्षिप्त परिचय ।' **रोलम्ब**, २२:१-२ (जनवरी-जून, २००२), पृ. ३४-३७ ।

पन्त, दिनेशराज, **गोरखाको इतिहास** (पहिलो भाग) । काठमाडौंः स्वयं, विसं २०४१ पौष ।

पौडेल, नयनाथ (सं.), **भाषा वंशावली** (भाग १) । काठमाडौंः नेपाल राष्ट्रिय पुस्तकालय, विसं २०२० पौष १ ।

बराल, भवानी, **यस्तो हुनुपर्छ राज्यको संरचना** । धरानः विजयपुर, प्रकाशन विसं २०६१ भदौ ।

वज्राचार्य, धनवज्र, 'डोयहरु को हुन् ?' **पूर्णिमा**, ४ (विसं २०२१ माघ), पृ. २०-३१)

**लिच्छविकालका अभिलेख** । कीर्तिपुरः नेपाल र

एशियाली अनुसन्धान केन्द्र, विसं २०३० ।
मध्यकालका अभिलेख । कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, विसं २०५६ असार ।

वज्राचार्य, नरेशमान, नेपालको बौद्धधर्म वा परम्परामा नेपालमण्डल ।' वज्रराज शाक्य (सं.) - **नेपालमण्डलया बौद्धसंस्कृति सम्मेलन- १११९: छगू प्रतिवेदन** । यल: लोटस रिसर्च सेन्टर, पृष्ठ ११३-१२८ ।

वैद्य, जनकलाल, **नेपालभाषाया प्राचीन काव्यसिर्जना** । काठमाडौं: नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, विसं २०५९ ।

योगी नरहरिनाथ व अन्य (सं.) **हिमवत्‌खण्ड:** (स्कन्दपुराणमध्ये) । काशी (गोरक्ष टिल्ला): योग प्रचारिणी, विसं २०१३ ।

लाल, वनारसी, 'बौद्ध तन्त्रों में पीठोपपीठादि का विवेचन ।' **धी:** (दुर्लभ बौद्ध ग्रन्थ शोध पत्रिका), संख्या १ (१९८६), पृ.१३७-१४८, ३(१९८७), पृ. ६५-६९, १० (१९९०), पृ.१४०-१५२, ११(१९९१), पृ. ५७-६२, २० (१९९६), पृ. ४१-४६ ।

'सल्यानटारमा लिच्छविकालीन शहरको भग्नावशेष' **गोरखापत्र**, विसं २०५४कार्तिक २ शनिवार, पृ. १, ११ ।

सुरेश (प्रस्तुति), 'द युनाइटेड स्टेट्स अफ नेपालमण्डल ।' **सन्ध्या टाइम्स** (शुक्रवा:या तँसापौ), पृ क ।

## English Publications

Acharya, Jayaraj (Tr.), **The Nepala-Mahatmya of the Skandapurana.** New Delhi : Nirala publication, 1992.

Aryal, Deepak and others, **Nepal District Profile : A Districtwise Socio–Techno- Economic Profile of Nepal**. Kathmandu : National Research Associates,

1982.

Gutschow, Neels and Manabajra Bajracharya, 'Ritual as Mediator of Space in Kathmandu'. **Journal of the Nepal Research Centre** (JNRC), Vol. I (1977), PP. 1-10.

Gutschow, Nicls, **Stadtraum und Ritual der newarischen Stadte im Kathmandu - Tal.** Stuttgart : Verlag W. Kolshammer, 1982

Kirkpatrick, Coloncl,. **An Account of the Kingdom of Nepaul** being the substance of observations made during a mission to that country in the year 1793. London : William Miller, 1811 (Reprint 1969, New Delhi : Manjusri Publishing House).

Malla, Kamal P.,. 'The Nepala - mahatmya - A IX Century text or a pious Fraud ?' **Coutributious to Nepalese Studies** (CNS), 1991 (Janaury), pp. 145-158.

Maeda, Chisato,. 'Nepala Mandala'. **Paleswan**, (Journal of Lotus Research Centre). Vol. 22 (2005), pp. 126-132.

Ranjitkar, Siddhi B.. 'Dasain : Worshipping Goddess Durga'. **The Rising Nepal** (Friday Supplement), October 7, 1994, P. I.

Rospatt, Alexander,. **The Periodic Renovations of the Thrice Blessed Svayambhucaitya of Kathmandu**.Leipzig: unpublished

Habilitationsschrift submitted at the University of Hamburg, 2000.

Shastri, Hara Prasad,. 'Narapatijayacaryatika'. In : **A Catalogue of Palm-leaf & Selected paper Manuscripts**. Calcutta : Baptist Mission Press, 1905.

Tamot, Kashinath,. **A Unifying concept of Nepalmandal**. Paper presented at the conference on Nepal-Current State of Research and Perspectives in memoriam Professor Bernhard Kolver, organised by Institute of Indology and Central Asian Studies, University of Liepzig, June 19-22, 2003, 19 pp.

Vajracarya, Dhanavajra and Kamal P. Malla,. **The Gopalarajavamsavali.** Wiesbaden: Franz Stainer Verlag, AD 1985.

## परिशिष्ट १

## नेपाल-माहात्म्यमा नेपाल पुण्य-क्षेत्र

### मूल संस्कृत पाठ

*पूर्वस्यां कौशिकी पुण्या सर्वपापनाशिनी ।*
*गङ्गा त्रिशूलगङ्गाख्या प्रतीच्यां दिशि संस्थिता ॥ ३ ॥*
*उत्तरस्यां दिशि तथा सीमा शिवपुरी मता ।*
*दक्षिणस्यां दिशि नदी पवित्रा शीतलोदका ॥ ४ ॥*
*एतन्मध्ये महापुण्यं नेपालं क्षेत्रमीरितम् ॥ ५ ॥*

### नेपाली अनुवाद

पूर्वमा सवै पाप नाश गर्ने पुण्य कौशिकी (कोशी ?) गङ्गा, पश्चिम दिशामा रहेको त्रिशूलीगङ्गा, उत्तरपट्टिको सीमा शिवपुरी भनेर मानियो, दक्षिण दिशामा पवित्र शीतलोदका नदी (चीसापानी) खोला ?), यस वीचमा मनोहरा र वाग्मतीको रमाइलो सङ्गममा रहेको यो ज्यादै पवित्र नेपालक्षेत्र भनेर बताइयो ।

### स्रोत

खनाल, मुक्तिनाथ (अनु.), । **नेपाल-महात्म्य** । काठमाडौं: नेराप्रप्र, विसं २०५८, पन्ध्रौ अध्याय, श्लोक ३-५, पृ. १६३ ।

### English Translation

On the east, there is a holy river Koshi, destroyer of sins. On the west is the river named Trishuli. On the north, the Sivapuri (mountain) is regarded as the border. On the south, the holy river Sitalodaka (Chisapani Khola) (marks the border) Within this area is defined the holy land, Nepal.

### Source

Acharya, jayaraj (Tr.), **The Nepala-Mahatmya of the Skandapurana**. New Delhi : Nirala Publications, 1992, Chapter 15, Starozas 3-5, p. 168.

## परिशिष्ट २

## हिमवत्खण्डमा नेपाल देव-क्षेत्र

### मूल संस्कृत पाठ

*स्कन्द उवाच -*

*गण्डकी कौशिकी चैव तयोर्मध्ये वरस्थलं ।*
*नीलकण्ठ-नटेशौ चं तयोः पुनस्तथाविध ॥ १ ॥*

*नेपाल इति विख्यातं देवक्षेत्रं सुखप्रद ।*
*ज्ञेयमगस्त्य तत्क्षेत्रं हिमवत्सानुसुन्दरम् ॥ २ ॥*

### स्रोत

योगी नरहरिनाथ र अन्य, । **हिमवत्खण्डः** (स्कन्दपुराणमध्ये) । काशी (गोरक्षटिल्ला) : योग प्रचारिणी, विसं २०१३, अध्याय ७०, पृ. १५४ ।

### नेपाली अनुवाद

स्कन्दजी आज्ञा गर्नुहुन्छ -

गण्डकी र कौशिकीका एवं नीलकण्ठ (गोसाईंथान्) र नटेश्वर (जटेश्वर) नारायणी पूर्वतट भारत राज्य, जिल्ला चम्पारनका माध्यमा ॥ १ ॥ नेपाल भन्ने प्रशिद्ध सुखदायी देवक्षेत्र छ । हे अगस्त्य सो क्षेत्र हिमालय टाकुराहरुमाको सुन्दर हो ।

- पं. बुद्धिसागर पराजुली । (अध्याय ६६-७१ का अनुवादक), अध्याय ७०, पृ. १६१ ।

## परिशिष्ट ३

### चतु:षष्ठी शिवलिङ्ग यात्रा-क्षेत्र

| | | |
|---|---|---|
| १ | कुशेश्वर | - ओलतीर्थ (दुम्जा, रामेछाप) |
| २ | भीमेश्वर | - थथु कुसिखुहो (भीमेश्वर नपा, दोलखा) |
| ३ | काफेश्वर | - ओलन थओने दोलखाया ओनस खुसिहो (कार्पी, वाम्हविसे काभ्रे) |
| ४ | कश्यपेश्वर | - महादेओया दह दथुस चोङ देवपुरी (मण्डन, पाँचखाल, काभ्रे) |
| ५ | स्फटिकेश्वर | - धलिखेल (फटकशिला, धुलिखेल, काभ्रे) |
| ६ | चण्डेश्वर | - भोतया चसोर (चण्डेश्वरी, बनेपा, काभ्रे) |
| ७ | धनेश्वर | - भोतया यंतागुचो (श्रीखण्डपुर, बनेपा, काभ्रे) |
| ८ | विकटेश्वर | - सङा (सांगा, काभ्रे) |
| ९ | इन्द्रेश्वर | - पनती (पंति, काभ्रे) |
| १० | भालेश्वर | - आस्याभार (बिहावर, काभ्रे) |
| ११ | गुप्तेश्वर | - भालेया गुहा (भारदेउ, काभ्रे ?) |
| १२ | तीलेश्वर | - मनसिली (लेले २ किमि पूर्व, ललितपुर) |
| १३ | चम्पेश्वर | - लेलेया यंगागुन पिओने (लेले १ किमि पश्चिम, ललितपुर) |
| १४ | रामेश्वर | - त्याङा (टीकाभैरव, ललितपुर) |
| १५ | कालेश्वर | - मृगुचो (लेले दक्षिण तुंगगां, ललितपुर) |
| १६ | नटारम्भेश्वर | - ङातलाचो (महादेवटार, मकवानपुर) |
| १७ | उदारकेश्वर | - फनपी (तासिदोल, फर्पिङ, काठमाडौं) |
| १८ | गोपालेश्वर | - फनपी (फर्पिङ १ किमि पूर्व) |
| १९ | चम्पकेश्वर | - ताहाक्ष्यल (विसंखेल, चित्लाङ, मकवानपुर) |

२० उन्मत्तेश्वर - तेस्तु (खत्रीगां, तिस्तुङ, मकवानपुर)

२१ नन्दिकेश्वर - तेस्तु (तिस्तुङ, मकवानपुर)

२२ गोखुरेश्वर - कुंछाल (तिस्तुङ, मकवानपुर)

२३ पाण्डुकेश्वर - पलु (पालुङ, मकवानपुर)

२४ कूटेश्वर - पलुन पच्छिमदोषे योजनछि पाक (महादेवखर्क, चिसापानी, मकवानपुर)

२५ अशितेश्वर - अगराखुहों (व्यासि, चिसापानी, मकवानपुर)

२६ भैरवेश्वर - नओक्वाथ (देवीघाट, नुवाकोट)

२७ ब्रम्हेश्वर - कविराजचो (कविलास, नुवाकोट)

२८ स्कन्देश्वर - कपिदासया यंतागुको (सलागु, नुवाकोट)

२९ शतरुद्रेश्वर - सिफूलचो (शिवपुरी, काठमाडौं)

३० काकेश्वर - कायल (कापलँ = भज्याङ ?, गागलफेदी, काठमाडौं)

३१ मणिचूडेश्वर - गुबालस ईशानकुन (मणिचूड, साँखु, काठमाडौं)

३२ जोगेश्वर - गुवाल (गुंविहार, सांखु, काठमाडौं)

३३ नारायणेश्वर - ओन्तागु (लब्सीफेदी, सांखु, काठमाडौं)

३४ ज्योतिलिङ्गेश्वर- सको (सांखु, काठमाडौं)

३५ रत्नचूडेश्वर - नाला दवूलचो (महादेवपोखरी, नाला, काभ्रे)

३६ वागीश्वर - वागेश्वर (भक्तपुर)

३७ कीलेश्वर - चंगु (चांगु, भक्तपुर)

३८ बाल्मीकीश्वर - खोपदेशस खोहोदो (हनूमानघाट, भक्तपुर)

३९ मङ्गलेश्वर - खोपोया खोहोदो (मङ्गलाछैं, नासमना, भक्तपुर)

४० विमलेश्वर - शिपादोल (सिपाडोल, भक्तपुर)

४१ अनन्तेश्वर - अनालिग (गुण्डु, भक्तपुर)

४२ विश्वरुपेश्वर - कतगु (तासिगाल, ललितपुर ?)

४३ सोमलिङ्गेश्वर- सोमलिंग (सोमलिंगटार, ललितपुर )

४४ गोभराटेश्वर - रुभु (लुभु, ललितपुर)

४५ भृंगेश्वर - सुलुगुथि (सुनाकुथि, ललितपुर)

४६ त्रिलिङ्गेश्वर - बाहालुखा (बहालुखा, ललितपुर)

४७ कुपिटेश्वर - भिंद्योया कोस (मंगलवजार, ललितपुर)

४८ सर्वेश्वर - कोंती (कुम्भेश्वर, ललितपुर)

४९ गोलोकेश्वर - ताहाक्षल (नैकाप, काठमाडौं)

५० चन्दनभराटेश्वर - नवलिंग (मातातीर्थ, काठमाडौं)

५१ जक्षेश्वर - होलचा (हलचोक, काठमाडौं)

५२ चण्डिकेश्वर - तोखा (काठमाडौं)

५३ धर्मेश्वर - चपुलिगाम (चपलिंगाऊँ, काठमाडौं)

५४ गोकर्णेश्वर - गोकर्ण (काठमाडौं)

५५ कोटिलिंगेश्वर - संखमूल (ललितपुर / कोटेश्वर, काठमाडौं)

५६ वाणेश्वर - ओथली (महादेवस्थान, वानेश्वर,काठमाडौं)

५७ ज्ञानेश्वर - जेष्ठिरा नदी (ज्ञानेश्वर, काठमाडौं)

५८ पर्वतेश्वर - वासुकिया यंताथलि (कैलास, देउपाटन)

५९ जलेश्वर - वाग्मतिया लंख (गुह्येश्वरीघाट, काठमाडौं)

६० गुह्येश्वर - गुह्येश्वरी (काठमाडौं)

६१ किराटेश्वर - बालागु (मृगास्थली, पशुपति, काठमाडौं)

६२ भश्मेश्वर - गोलदेश (पशुपति, काठमाडौं)

६३ भुवनेश्वर - गोल (पशुपति, काठमाडौं)

६४ रुद्रगारेश्वर - मतिमण्डिल, गोलदेश (पशुपति, काठमाडौं)

पशुपतीश्वर - पशपति महारुद्र

इति हिमवत्खण्डे चतुषष्ठि स्वयंभु शिवलिंगस्य स्नानजात्राया क्रम समाप्तः ॥

**स्रोत**

जोशी, हरिराम, । **अभिनव संस्कृति कोष** । ललितपुर : जोशी रिसर्चइन्स्टिच्युट, विसं २०५८, पृ. ३९५-३९८ ।

## परिशिष्ट ४

## यक्ष मल्लको नेपालमण्डल विस्तार

*आसीद् विश्वविशोभिनिम्मल (पत्र २०१प३) यशोशशौ रघोरन्वये*
*विख्यातो जययक्षमल्लनृपतिर्दातावदाताशयः ॥*

*यो राज्यं मिथिलां विजित्य मगधं गत्वा गयां पौरुषाद्*
*यो नेपालमकण्टकं व्यरचयिज्जित्वा नृपान् पार्व्वतान् ॥*

*(४) प्राच्यां यो बङ्गदेशं तदनु सुरनदीं दक्षिणे दिग्विभागे*
*विख्यातः पश्चिमायां प्रविलसदसिना गोरखापालपातः ॥*

*भूमिं सप्ताहगम्यापि धनददिशो योउवधीकृत्यभुक्त्वा*
*रेमे दोर्दण्डशौण्डः (५) प्रखरतरलसत्काण्डकोदण्डपाणिः ॥*

*श्रीश्री(२०२ अ४)मज्जगज्ज्योतिर्मल्लविरचिता श्रीस्वरोदयदीपिका समाप्ता ॥ ....... शाके (६) १५३६ लसं ४९४.....(७) श्रीजगज्ज्योतिर्मल्लनिदेशमासाव्य श्रीवंशमणिशर्म्मा व्यलेखीदिदं पुस्तकं ।*

### स्रोत

नेजहसंप रील ल्याः ए ३१/१७ **स्वरोदयदीपिका** (नरपतिजयचर्यास्वरोदयटीका), मैथिलीलिपि (नेसं ७३४)।

Shastri (1905 : 107-109)

## नेपाली अनुवाद

संसारमा सुहाउने सफा कीर्तिको समूह भएको रघुवंशमा प्रशिद्ध, दानी, सफा मनसाय भएका राजा यक्ष मल्ल हुनुभयो, जसले पुरुषार्थ गरी मिथिला जितेर, मगध र गयामा गएर, पहाडिया राजाहरुलाई जितेर नेपाललाई अकण्टक बनाउनु भयो । बाहुबल भएका, धनु भिरेका जसले चम्किएको तरवारद्वारा पूर्वपट्टि बङ्गालसम्म, दक्षिणपट्टि गङ्गा नदीसम्म, पश्चिमपट्टि गोरखा र पाल्पासम्म र उत्तरतिर सातादिनको बाटोसम्मको राज्य जित्नु भयो ।

## स्रोत


पन्त, दिनेशराज, नेसं ११०५ । **गोरखाको इतिहास** (पहिलो भाग) । काठमाडौं: स्वयं, विसं २०४१ पौष, पृ. २०-२१ ।


## English Abstract

Jye Ekshah Mull, or Jye Kush Mull, who is said to be have annexed Morung, Tirhoot and Gyah to his dominions, and to have conguerred also Goorkha to the westward, and Sikarjoong of Tibet to the northward.

## Source


Kirkpatrick, 1969 , p. 266

# परिशिष्ट ५

## शिवसिंह मल्लको राज्य-सीमा

*थ्व वेरस, राजाधिराज (पत्र १५अ३) परमेश्वर, श्रीश्रीजयसिवसिंहमल्लस प्रज्यावस जुरो ॥ थ्व वेरस, राज्य याङा, दोरखात्वं, ववनेन यहास्यं, (४) रिस्ति, किरोत्वं, यौहास्यं, गण्डपारन जुरो, यिहास्यं यौव, मुकानपुर शिंधुरित्वं, राज्य याक जुरो ॥*

## स्रोत

नेज्हसंप रील ल्याः ई १८७४/२ मल्लकालिक ऐतिहासिक घटनावली, नेपाललिपि, पत्र ३० (शिवसिंहमल्लया पालय् निकः स्वयम्भू ल्ह्वंगुवारेया थ्यासफू) ।

## English Translation

At that time, it was the era of the overlord of kings (rajadhiraja), the supreme lord, the Thrice Blessed Jayasivasimha Malla. At that time, he reigned, with his kingdom (extending), starting in the east, up to Dolkha, towards the north up to Risti (close to Tatopani) and Kiro (=Kyirong), towards the west beyond the (Trisuli ?) Gandaki (i.e. the then border between the realmus of the Gorkha and Kathmandu kings), towards the south and west up to Makawanpur and Sindhuli.

## Source

v.Rospatt, Alexander,. **The Periodic Renovation of the Thrice Blessed Svayambhucaitya of Kathmandu.** Leipzig : unpublished Habilitationsschrift submitted at the University of Hamburg, 2000.

# परिशिष्ट ६

## चतुर्विंशति पीठ चक्र-क्षेत्र एक पद्धति

| पीठस्थान | तीर्थस्थान |
|---|---|
| **प्रथम/चित्त-चक्र** | |
| १. ब्रह्मायणी/गुह्येश्वरी | पशुपति-शान्ततीर्थ |
| २. माहेश्वरी/मनमैजु | तोखा-मनोरथतीर्थ |
| ३. कौमारी/शङ्करेश्वरी | शङ्खमूल-शङ्करतीर्थ |
| ४. वैष्णवी/ज्ञानेश्वरी | कन्हखुसि-ज्ञानतीर्थ |
| ५. वाराही/मज्येश्वरी | पचली-राजतीर्थ |
| ६. इन्द्रायनी/कंकेश्वरी | विष्णुमति-लखुतीर्थ |
| ७. चामुण्डा/लुति अजिमा | भचाखुसि-निर्मलतीर्थ |
| ८. महालक्ष्मी/गोकर्णेश्वरी | गोकर्ण-पुण्यतीर्थ |
| **द्वितीय/वाक्-चक्र** | |
| ९. ब्रह्मायणी | वन्ताक्षेत्र (भक्तपुर वाहिर) |
| १०. माहेश्वरी | म्हय्पि |
| ११. कौमारी | लुभु |
| १२. वैष्णवी | वल्खुखोला |
| १३. वाराही | वादेय् (चापागाउँ) |
| १४. इन्द्रायणी | सतुंगल |
| १५. चामुण्डा | फुसिंखेल |
| १६. महालक्ष्मी | कन्तिनामदेश |

## तृतीय/काय-चक्र

| | |
|---|---|
| १७. ब्रह्मायणी | चण्डेश्वरी (बनेपा) |
| १८. माहेश्वरी | कपिलास |
| १९. कौमारी | पनौति |
| २०. वैष्णवी | यप्पा (दक्षिण ललितपुर) |
| २१. वाराही | दक्षिणकाली |
| २२. इन्द्रायणी | गोखुदे |
| २३. चामुण्डा | देवीघाट (त्रिशुली) |
| २४. महालक्ष्मी | दोलालघाट |

## Source

Gutschow, Niels and Manabajra Bajracharya,
"Ritual as mediator of Space in Kathmandu."
**Journal of the Nepal Research Centre,**
Vol. I, 1977, pp. 1-10.

## अर्को पद्धति

| चक्रसंवरमण्डलपीठ | नेपालमण्डलपीठ स्थान |
|---|---|
| | **चित्त-चक्र** |
| १. पुल्लिलमलय | १. चन्द्रलख - नारायणहिटी राजदरवारभित्र |
| २. जालन्धर | २. पासिक - तीनधारा पाठशाला पूर्वपट्टि |
| ३. ओडियान | ३. कमलाती - कमलादि गणेशस्थान |
| ४. अर्वुद | ४. लुमधि - भद्रकाली, टुंडिखेल छेउ |
| ५. गोदावरी | ५. फिबो - आर्मी हेडक्वार्टरसंगै |

६. रामेश्वरी — ६. पचली नैअजिमा - पचलीभैरव

७. देवीकोट — ७. कंगः - कंगेश्वरी, मरुहिटी / ढोकाटोलवाटो

८. मालब — ८. लुति - इन्द्रायणी, ढल्को

**वाक्-चक्र**

९. कामरुप — ९. तनजु - फैखा, हरिसिद्धि, स्वयम्भू पछाडि

१०. ओद्र — १०. म्हयूपि - म्हयूपि, नयाँ बजार

११. त्रिशकुनी — ११. तोदन - तुनालदेवी, नरः

१२. कोशल — १२. कति - दांछि, चांगुमुनि

१३. कलिंग — १३. मिसिदो - महाकाली, भक्तपुर

१४. लम्पाक — १४. सोरुथि - शंखमोल, पाटन

१५. कान्ची — १५. जालन्धर - पांगा, चारखला

१६. हिमालय — १६. बःखु - मच्छेनारायण जानेबाटो

**काय्-चक्र**

१७. प्रेतपुरी — १७. ग्वखु - भिंढुंगा, क्षेत्रपाटी नदीतीर

१८. गुहदेवता — १८. गदेभेरु - देविघाट, त्रिशुली

१९. सौराष्ट्र — १९. तुप्या - नवलिंग (भद्रकाली), बूढानीलकण्ठ जाने बाटो)

२०. सुवर्णद्वीप — २०. सादुकुना - सादुकोल, सांखु

२१. नगर — २१. समेदा - दोलालघाट

२२. सिन्धु — २२. ओतीर्थ - दुम्जाघाट, कोशीक्षेत्र

२३. गलु — २३. त्यांगा - टीकाभैरव, वादे, त्यांगा

२४. कुलदेवता — २४. भंग - भंगु, कोदुवाल

वज्राचार्य, नरेशमान, । 'नेपालको बौद्धधर्म वा परम्परामा नेपालमण्डल'। वज्रराज शाक्य (सं) - **नेपालमण्डलया बौद्धसंस्कृति सम्मेलन -१११९ छगू प्रतिबेदन**( यलःलोटस रिसर्च सेन्टर) पृ ११३ -१२८ ।

# परिशिष्ट ७

## नेपालमण्डल पीठ - क्षेत्र

| मातृका पीठ | स्थान (ए २४२-१ भाषा वंशावली) |
| --- | --- |
| १. ब्रम्हायणी | समेना / सम्यक्‌चुली |
| २. माहेश्वरी | बेथाचा / बेथान्चुली |
| ३. कौमारी | फलिचो / फूलचोचुलि |
| ४. वैष्णवी | मयनकोटिचो / मयनकोटिचुली |
| ५. वराही | नातारम्भचो / नटारम्भचुली |
| ६. इन्द्रायणी | लिंगुचो / लिंगुचोगुली |
| ७. चामुण्डा | गण्डेचो / गंचोचुली |
| ८. महालक्ष्मी | शिवपुरीचो / शिवपुरीचुली |

## द्वितिय-मण्डल/आवरण/मध्य पीठ

| | |
| --- | --- |
| ९. ब्रम्हायणी | पनाति / पनौती |
| १०. माहेश्वरी | त्याड्रा / टीकाभैरव |
| ११. कौमारी | भंगुलि / भंगुलिचो |
| १२. वैष्णवी | ग्वखो / गोखु |
| १३. वाराही | तल / लम्जुङ |
| १४. इन्द्रायणी | नवलिंग / वालिग |
| १५. चामुण्डा | गोकर्ण / गोकर्ण |
| १६. महालक्ष्मी | सारंदुं / सारंदु-सांखु |

## *तृतीया-मण्डल/आवरण/उपत्यका पीठ*

| | | |
|---|---|---|
| १७ | *ब्रम्हायणी* | *वन्ताक्षेत्र/वताबु* |
| १८. | *माहेश्वरी* | *गिमतो/गिमतो* |
| १९ | *कौमारी* | *सुलुंति/सुनागुठी* |
| २० | *वैष्णवी* | *बलिखो/बलखु* |
| २१ | *वाराही* | *ह्मोसपिं/होस्याङ* |
| २२ | *इन्द्रायणी* | *टोण्डल/त्वथुल* |
| २३ | *चामुण्डा* | *चिरगंगा/चैलगंगासन्धी* |
| २४ | *महालक्ष्मी* | *कन्ति/कान्ति* |

## *चतुर्थ-मण्डल/आवरण*

| | | |
|---|---|---|
| २५ | *जालेश्वरी(जालन्धर)* | *सारदु/सारंदु* |
| २६ | *कामेश्वरी (पूर्णगिरि)* | *भृङगुलि/लुमुडी* |
| २७. | *ओडीश्वरी (ओडियान)* | *बुको/गोखु* |

*इति चण्डपितामह विरचिता(पत्र ७३अ३)या नेपालमण्डलपीठ पंजिका समाप्त। (ए २४२-१)*

## स्रोत

नेजहसंप ए २४२/१ नेपालमण्डलपीठमहावलिविधि

नेजहसंप ए १२५०/१७ सिद्धाग्निकोट्याहुतिस्वस्थानवलिविधि

## परिशिष्ट ८

## सप्तकोशी र सप्तगण्डकीको नामावली

### सप्तकोशी

| | प्रचलित नाम | जलदेवी नाम | जलधारा नाम |
|---|---|---|---|
| १. | इन्द्रावती | शची | सत्यवाहिनी |
| २ | सुनकोशी | दुर्गा | शुभश्रवा |
| ३. | तामाकोशी | नारायणी | पापघ्नी |
| ४. | लिखु | कपर्दिनी | वरदा |
| ५. | दूधकोशी | चण्डी | भद्रावती |
| ६. | अरुण | शिवदूती | महाप्रभा |
| ७. | तमोर | वाराही | दुःखघ्नी |

### सप्तगण्डकी

| | | | |
|---|---|---|---|
| १ | त्रिशुली | माहेश्वरी | धर्मवती |
| २. | बूढीगण्डकी | ब्रम्हायणी | यशोधारा |
| ३. | दरौदी | बैष्णबी | स्वर्णप्रभा |
| ४. | मर्स्याङदी | नारसिंही | विश्वधारा |
| ५. | सेती | गंगा | सितप्रभा |
| ६. | मादी | कोमारी | रत्नप्रभा |
| ७. | कालीगण्डकी | महाकाली | कृष्णप्रभा |

### स्रोत

अधिकारी, टीकाराम (संपा.-अनु.), । **गण्डकी-माहात्म्यम्** ।
दाङः महेन्द्र संस्कृत विश्वविद्यालय, विसं २०५५ गरुपूर्णिमा, पृ. ४-९ ।

पौडेल, नयनाथ, । **भाषा वंशावली** (भाग १) काठमाडौं :
नेपाल राष्ट्रिय पुस्तकालय, पृ. ४-५ ।